उदाउँदो तारा सहित्य समाजद्वारा प्रकाशित



# इन्द्रेणी

हाइकु विशेषांक

साहित्यिक त्रैमासिक हवाई पत्रिका वर्ष १, अंक १, पूर्णाङ्क १ (जुलाई-सेप्टेम्बर) सहयोग आरएम १।-



# हाइकुबारे जानकारी

कम शब्दमा नै धेरै भाव प्रकट गर्ने प्रमुख विशेषता बोकेको हाइकु जापानी शैलीको कविता हो। सातौं-आठौं शताब्दीतिरको हाइकाइ श्रृङ्खलाको बिकसित रूप हो हाइकु। तत्कालीन हाइकाइ श्रृङ्खलाका शुरूका तीन हरफ मात्र जस्लाई होक्कु भनिन्छ, आज हाइकु रूपमा उदाएको छ। हाइकु पूर्ण रूपमा शास्त्रीय संरचनामा बाँधिएको हुन्छ। पहिलो हरफमा पाँच अक्षर, दोश्रो हरफमा सात अक्षर र तेश्रो हरफमा पाँच अक्षर गरी सत्र अक्षरको हुन्छ हाइकु। तर शास्त्रीय संरचना मात्र पनि पर्याप्त छैन। कलात्मक ढंगबाट प्राकृतिक किंगोको प्रयोग गर्नुपर्छ हाइकुमा। हाइकु ओजिलो र बोझिलो हुनुपर्छ। ५-७-५ को संरचनाभित्र शब्दजाल बुन्देमा त्यसलाई हाइकुको कोटीमा राख्न सकिँदैन। यो हाइकुको कठिन मान्यता हो र शास्त्रीय चरित्र पनि।

सातौं शताब्दीमा थालिएको श्रृङ्खलाबद्ध हाइकाइ लेखन क्रम बिस्तारै छोटिदै छोटिदै ५-७-५ संरचना मात्रको होक्कुसम्म आउन थाल्यो। केहि कविहरूले प्रयोग स्वरूप १७ अक्षरीय संरचनामा मात्र लेख्न थाले। ५-७-५ को मात्र प्रयोग गरेर होक्कु लेख्ने चलन त मुरोमाचीकालीन साहित्यिक युगमा देखा परेको थियो। तर त्यो बेला शैली अस्पष्टताको कारणले होक्कुले जरा फैलाउन पाएन। हाइकाइलाई समेत व्यंग्यात्मक प्रस्तुतिमा प्राथमिकता दिइरहेको बेला नविन प्रयोग गरिएता पनि व्यंग्यात्मकताको शिकार बन्न गयो। थप केहि समय संक्रमणीय अवस्थामा बित्यो। तर समयको गति र मानसिक परिवर्तन सँगसँगै यो शैलीले पनि स्पष्ट अभिव्यक्ति र कवितात्मक आस्वादन दिन थाल्यो। आरकिन्दा मोरिटाके (१४५२-१५४०) ले पहिलो पटक हाइकाइलाई होक्कु अर्थात् हाइकुमा रूपान्तर गर्न सफल भए। यसबेला सत्र (१७) अक्षरीय संरचनालाई हाइकु भनिदैनथ्यो। होक्कु मात्रै भनिन्थ्यो। हाइकु नामाकरण भएको त धेरै पछि हो। मोरिताकेले लेखेको हाइकु यस्तो छः

झरेको फूल
हाँगामा फर्कन्छ की
हेर, पुतली

हालसम्म भेटिएका सामाग्रीहरूलाई आधार मान्दा सम्भवत उल्लेखित हाइकु नै जापानी साहित्यको पहिलो हाइकुरूपी रचना हो। मोरिताकेलाई अर्का कवि यामाकाजी सोकान (१४६५-१५५३)ले पनि सहयोग गरेका थिए। यद्यपी हाइकाइ हास्य अभिव्यक्तिलाई काव्यात्मक आस्वादन पस्कीने काममा भिन्न विचार राख्ने तत्कालीन उदयीमान कवि माचुनागा तोइतोकु तथा निशियामा सोइनले पनि यस अघि प्रयास गरेका थिए तर उनिहरूको प्रयासले पूर्णता पाउन सकेको थिएन।

हेइयान युग (७९४-११८५) मा लेख्ने गरिएको श्रृङ्खलावद्ध कविता वा रेङगाको रूप वदलिदै जान्छ। कविताहरू थकान मेट्न होस् वा विछोडको वेदना मेट्न होस्-होक्कु लेख्छन्। वाका लेख्छन्। हाइकाइ र रेङगामा खासै भिन्नता पाइँदैन। हाइकाइ श्रृङ्खला नै रेङगा हो।

माचुनागा तेइतोकु (१५७१-१६५३) हाइकाइका क्षेत्रमा माहीर मानिन्छन्। खासगरी अधिकारीक र परम्परागत संरचना यिनले छोडेनन्। साठियौं शास्त्रीय नियमको अनुसरण गरे। जथावाभि विषयवस्तुको छनौट र छाडा हास्यव्यङ्ग्य प्रवृत्ति बढ्दै जाँदा तेइतोकुले बौद्धिक हास्यव्यंग्यलाइ बढावा दिए र उनि यसमा सफल पनि मानिन्छन्। हाइकाइका क्षेत्रमा नियमपालनको हकमा कडा रूपमा प्रस्तुत भए। तर उनको निधनपछिका दिनमा पुन फुक्का हुनथाले, स्वतन्त्र हाइकाइ जन्मन थाले। कवि सियामा सोइन (१६०५-१६८२) ले हाइकाइको प्राचीन निरन्तरतालाई ठूलो चुनौति दिए। अरूभन्दा भिन्न ढंगबाट प्रस्तुत हुन चाहे उनी। यसले गर्दा स्वतन्त्र हाइकाइ लेख्ने युवा जमातले झन् नियमहरू तोड्न थाले। यसै कालका अर्का प्रसिद्ध कवि हुन् - इहारा साइकाकु (१६४२-१६९३) उनी नब्बेको दशको एक दिन ओसाका शहरमा रात बिदाउँदा २४ घण्टामा २३५०० पङति रचना गरेको भन्ने तथ्य भेटिएको छ। गृहयुद्धले ग्रसित तत्कालिन जापानी समाजमा काव्य रचना गर्नु निकै ठूलो उपलब्धि मानिन्थ्यो। त्यसमाथि पनि सैनिक शासनको नीति नै कवि र सिर्जनाको विपक्षमा थियो।

दानरिन हाइकु विद्यालय त्यस बेला प्रख्यात थियो। विद्यार्थीहरू पनि प्रशस्तै थिए। यस विद्यालयका कविहरूले खासगरी स्वतन्त्र हाइकाइमा जोड दिन्थे। जसका नाइके कवि सियामा सोइन (१६०५-१६८२) थिए। सोइनले हाइकु लेखन शैलिदेखि लिएर वाचनशैलिसम्म सबै कुरा सिकाएका थिए। सन् १६६० मा सोइनले दानरिन हाइकु विद्यालय नखोलेको भए जापानी हाइकु यस अवस्थामा सायदै आउन्नथ्यो होला।

**हाइकु र सेर्न्यू आफ्नै रचना**

हाइकु *डाँफेको नाच*
*हिउँको रमझम*
*वादलु साँझ।*

*कालीको खोँच*
*शिखरको उमंग*
*छिचोल्ने आँट।*

**सेर्न्यू** *परदेशी लोग्ने*
*सतिसावित्री पत्नी*
*रिट्ठेको दशै।*

*मैले थापेको*
*विद्युतीय धरापमा*
*तिमी परिछौ।*

नेपालमा २०१९ सालमा शंकर लामिछानेले सर्वप्रथम रूपरेखा पत्रिकामा "हाइकु" प्रकाशन गरेका थिए। ०००

## सम्पादकिय.............

उदाउँदो तारा सहित्य समाजबाट ईन्द्रेणी नामक हवाई पत्रिका प्रकाशित गर्ने भएको निकै लामो समय भैसकेछ हाम्रो कार्य ब्यस्तता भनौ या प्राबिधिक करणले हामीले प्रकाशनमा ढिला हुन गएता पनि हाल हामी सबै लागिपरेका छौ। नेपाली साहित्यलाई माया गर्ने साहित्यप्रेमीहरूको साथ पाएका छौ। बिश्वका बिभिन्न देशमा रहनु साहित्यप्रेमी साथीहरूको रचनाले हाम्रो पत्रिकाको शोभा बढाएको छ। हाम्रो निर्णयनुसार पहिलो अंक हाईकु बिशेष अंक हाईकु, हाईकु सम्बन्धि लेख हाईकु अन्तर बार्ता समेटिएको छ। अर्को अंक अर्को बिशेषांकमा विश्वमा रहनुहुने सम्पुण सर्जकलाई सकेसम्म समेट्ने छौ भन्ने जानकारी गराउदछौं। मलेसियाका सर्जकलाई हाईकु पनि नयाँ खुराक हुनेमा बिश्वस्त छौं। हाम्रो पत्रिका पढेर कमिकम्जोरी औंल्याई दिनु हुने आशा लिएको छौं। हामीलाई आफ्ना अमुल्य रचना दिई सहयोग गरी दिनुहुने सर्जकलाई हार्दिक धन्यवाद दिन चाहान्छ उदाउँदो तारा साहित्य समाज परिवार फेरि अर्को अंकमा भेटौला।

**संयोजक**
जीतमान राई 'सबिन'
**सह-संयोजक**
राजेश प्रवाह
**सदस्यहरु**
भिष्म दर्नाल
पुर्ण आले मगर
बुद्धी बैरागी
राजु राई
**सम्पादक**
(यस अंकको लागि)
दीप दर्शन
**कार्यकारी सम्पादक**
भुनसिं कुवँर
**सम्पादन सहयोगीहरु**
कृष्ण आलोक
थलिन्द्र भुजेल
धनकुमार चोङबाङ्
**प्रकाशकः**
उदाउदोतारा साहित्य समाज, पेनाङ्, मलेसिया

केएल प्रतिनिधिः नरेन बि मगर
मलका प्रतिनिधिः दीपक बिवस
जोहोर प्रतिनिधिः राज सहयात्री
ईपो प्रतिनिधिः मौलश्री लिम्बू



ईन्द्रेणीको दोस्रो अंक रुबाई प्रकाशन हुने जानकारी गर्दछु यहाँहरूका अमुल्य रचना पठाई सहयोग गरी दिनु हुन अनुरोध गर्दछौ

सम्पर्क sabin_rai45@yahoo.com
dipdarshan86@yahoo.com
०१४९७०७३१४, ०१४९६५०५३३
०१६४९६४३३५, ०१०३७८२६२७

हाइकु वार्ता

# सोचेर निस्किएको निष्कर्ष नै साहित्य हो

रामेछाप जिल्लामा रस्नालु ९ जनकपुर २०२६ जन्मिनु भएका केदार संकेत हाल बेलायत ह्याम्पसाइरमा रहँदै आउनुभएको छ। स्नातक तहसम्म अध्ययन गनुभएका उहाँले 'आँफै जलेको देश' (कविता संग्रह २०६५), 'एथेन्सको झरी' (नियात्रा संग्रह २०६७) र 'पैयुका फूलहरू' (हाइकु संग्रह) प्रकाशोन्मुख रहेको छ। कविता, नियात्रा (यात्रा स्पर्श), संस्मरण, समालोचना, गीत, गजल, हाइकु तथा अन्य समसामयिक लेखहरूमा कलम चलाउन मन पराउने उहाले साहित्यमा सुनुवार सेवा समाज बेलायतबाट २०१० मा सम्मानित हुनु भएको थियो। त्यस्तै पर्बते पुरस्कार 1996 हङकङबाट पाउनुभएका थियो। **बाँकी ४ पेजमा**



केदार संकेत (साहित्यकार)

**दीप दर्शन**

१. मान्छे मारेर
शान्ति कहाँ हुन्छ र
मुर्ख मान्छे हो ।

२. मान्छेको चोला
फत्रेको फुलजस्तो
ओईली झर्छ ।

३. सत्य झुक्दैन
साँचो लुक्दैन कतै
मुर्खहरू हो ।

४. महल भित्र
दुःख पनि हुन्छ नि
कस्ले देख्छ र !

५. बिछोड हुदा
माया मरेर जान्न
बाहना मात्र ।

**भगवती जाजरकोट**

**महेश्वर 'भावुक'**

१. नियती तिम्रो
बिचलित बिचार
भो भैगो अब ।

२. किन हो सानु
आज भोली बोल्ननी
गाह्रो मान्छौ त ।

३. होसियार है
ढुक्क कदापी हैन
सडक छेउ ।

४. मेरो कामना
शिखरको टाकुरा
चुम्नु तिमीले ।

५. बिरह पोख्ने
ति डाँडा पाखाहरू
बिरानो भए ।

**हाल मलेसिया**

**बिक्रम अर्पन**

१. प्रवास भित्र
यौन र पैसा न हो
प्रेमको खेती ।

२. लौ होसियार
प्रवासीनुको दाम
बिचार गरौन ।

**पाँचथर हाल जोहोर**
**०१०५३५५४४१**

**कृष्ण सिंह 'पेला'**

१. पुरानो भित्ता
नयां क्यालेन्डर
तीतो अतीत ।

२. स्वनामधन्य
मारक विषजन्य
त्यो अम्लवर्षा ।

३. "न" बाट सुरू
अचम्मको दर्शन
"न" मा नै अन्त्य ।

४. नयां नेपाल
पुरानै गोलमाल
खबरदार !

५. आकाश थाम्ने
हुटिट्याउँको भ्रम
यौटा दुःस्वप्न ।

**अर्जुन उजाड**

१. हात्तिका दाँत
जनतालाई ललिपप
सम्झौता पत्र ।

२. सगरमाथा
विश्वको शिर त्यो
कोचिला तिर ।

३. ल्हासाको यात्रा
गणतन्त्र नेपाल
कुतिको बाटो ।
४. बाघको छाला
स्यालको रजाई
छ सय एक ।

५, जातीय मुद्दा
संघीयतामा हामी
सोमालीयातिर ।

**नरेश रोकाहा**

१. रहरको खेती
परदेशको जागिर
फुटेको ऐना ।

२. पराजित हुन्छु
हरेक सपनीमा
सिंगो जिन्दगी ।

३. सगरमाथा
राजनीतिले अचेल
झुक्न थाल्यो कि ।

४. मनावतामा
काटमार पर्दैन
नीति फेरियो ।

**स्याङगजा**
**हाल : युएई**

**शेरु राई 'उदास'**

१. कुकुर रोयो
हाम्रो गाउमा पक्का
नेता आउछ !

२. थाहा पाएनौ ?
भुइचालो गयो नि
पल्लो कोठामा क्ष

३. रित्तो बोतल
हल्लिए झैं भान भो
आँखा मातेछ !

**जर्जिया, अमेरिका**
sheruudash@yahoo.com

**शिशिर सापकोटा**

१. नेपाली फिल्म
नेपालीकै कहानी
हिन्दीको नक्कल ।

२. होनहार युवा
पौरखिलो नेपाली
श्रम खाडीमा ।

३. नेपालीको चाह
नयां नेपाल निर्माण
कानुन शक्तिको ।

**हालः नेपाल**

**कुमार श्रेष्ठ 'यात्री'**

१. नेपाली नेता
कुकुरको पुच्छर
पर्यायावाची ।

२. सपना ठुला
सुर्य र चन्द्र चुम्ने
भ्यागुतो म त ।

३. दुइ सन्तान
ईश्वरको वरदान
ऊखान मात्रै ।

४. मुटुमा छुरा
आँखाको कसिङगर
तिम्रो चरित्र ।

५. डढेलो लाग्दा
संसार नै जलेछ
मेरो मात्रै पो ।

**रामेछाप- ६ कठजोर**

**प्रिन्स प्रकाश (प्रकाश शाही)**

१. दुःखको भारी
कहिले नसकिने
थुक्क जिन्दगी ।

२. भिज्यो सिरानी
हररातमा रोएँ
मौसमी माया ।

३. थाहै नपाई
आँखामा कैद गरें
तस्विर तिम्रो ।

४. सम्झना अझै
आउदै जादै गर्छ
लाग्छ बाडुली ।

५. बढ्दैछ किन
ढुकढुकी संधै नै
अभाव तिम्रो ।

**सुनारपानी-९, रामेछाप**
**हालः काँडाघारी,**
**गोठाटार-८ काठमाडौं ।**

**रुबेन पून मगर 'रन'**

१. धर्मको जड
चुरा पोते सिन्दुर
नारी अस्तित्व ।

२ . पानीको फोको
एकै क्षणमा फुस्स
मान्छेको जुनी ।

३. हिमाली शीर
बहादुरीको कथा
गुलामी युवा ।

४. पहाडी चौर
सिंगौरी खेल्ने ठाँउ
राज्य र सत्ता ।

**बाग्लुङ नेपाल**

**प्रभाकर असीम**

१. कंकाल नाच्यो
तुवाँलोभित्र सूर्य
अनिष्ट भयो !

२. अश्वेत धन
पवित्र भो हजुर
लाल सलाम !

३. अश्वेत काग
भाँचिएको हाँगामा
करायो क्वा क्वा !

४. घर्तिको अति
बेमौसमी संगीत
जनता हिस्स !

५. लुटको बेर्ना
प्रक्रिया पुर्याएर
गर्दैछ दाइँ !

**कृष्ण श्रेष्ठ "कल्स"**

हाँसी दिइन्
जुनझैं पुर्णिमाको
म त हराएं ।

आहा ! क्या राम्री
साकुराको फूल झैं
मेरी प्रियसी ।

आकास हेर
म संग तिमी हुंदा
जुनै चम्क्यो ।

चम्किँदा तिमी
जुन झैं आकाशमा
कृष्णजी मख्ख ।

तिम्लाई देखेर
पुर्णिमाको रातमा
जून रिसायो ।

**योकोहमा जापन**

**अज्ञात मित्र**

१. बिहेको रात
छोराको छ लालसा
दुबै दम्पती ।

२. जन्मियो छोरो
गाउघरमा भोज
ऋण काढेर ।

३. बोल्दानी खुसी
हिड्दा पनि फुर्ती
युद्ध जिते झैं ।

४. छोराको लागि
दिनरात नभनी
गांसै काटेर ।

५. छोराको मर्जी
मनपरेको केटी
बाआमा राजी ।

**दसैं**

१. लुगा र मासु
रमाए केटाकेटी
ऋणी भो बाबु !

२. दिदी र बैनी
गहना प्रतिस्पर्धा
लोग्ने बेहाल !

३. वाध्य ग्राहक
कृत्रिम छ अभाव
मौकामा चौका !

४. धर्मको नाम
हप्ताको रमझम
महिनौ चिन्ता !

**मनोज 'बिराली'**

१. उद्दत्त मन
समयको पासोमा
मृत्यु पर्खिदै ।

२. कोशीको पानी
छल्किदै र हाम्फाल्दै
भारतितर ।

३. आजको साझ
बोतल समाएर
देश लेख्दैछु ।

**बिराटनगर हाल मलेसिया**

**भोला सिवकोटी**

१. भाषाको जंगलमा
मेरो जिब्रो फुटेन
प्रवास पीडा ।

२. कलाको भाषा
लिपी न लवजले
बोलेको कसरी ?

३. मृत्यु भन्दैछ
पुरै सहर जल्दैछ
कहां पो खस्ने ?

४. कविको भाषा
हिउँ नि जलाउँछ
सिर्फ चेतना ।

५. यी आँखाहरू
मृत्यु कै आयुमाथि
मृत्यु विजय ।

**अन्वव मन्जरी**

१. जुनको आँसु
मोतिको दानासरि
सीतको थोपा ।

२. पर्खेर बित्यो
दुईदिने जीवन
आशा मरेन ।

३. देवता भाके
मिलेन वरदान
ढुंगाको मूर्ति ।

४. तिर्म्रो स्वादको
मात लागेर मरें
बिषालु च्याउं ।

५. प्रभात हुंदा
जुन नानी लुकिन्
घाम देखेर ।

**सुमन कार्की**

१. यो मायाजाल
नलाउदा नि हुन्न
लाउदा पीडा ।

२. नसोध तिमी
शिशिरे चरीलाई
वसन्त कस्तो क्ष

३ विश्वाश गर्दा
घात पाईन्छ यहाँ
नगर्दा हुन्न ।

४. कति सस्तो भो
सँगै जिउने बाचा
स्वार्थि भीडले ।

५. चाहना कस्तो
सहयात्री थकाई
गन्तब्य पुग्ने !

**ओखल्ढुङगा**

**कृष्ण आलोक**

१. खहरे खोला
मुग्लानको जागिर
खाली बाकस ।

२. दसैंको बेला
जमरा अनि टिका
रित्तो निधार ।

**बाग्लुङ हाल मलेसिया**

**श्रीजन श्री**

१. सेवामा भक्त
परोपकारी धुङो
फूलको हत्या ।

२. कागजी फूल
अबिरल बर्षात
मेरो नेपाल ।

**हाल मलेसिया**

### खेमराज गाउँले

१. च्याटमा भेट
प्रविधिको कमाल
नवीन सखा ।

२. स्वास्थ्यको ख्याल
आफैले गर्नुपर्छ
नत्र विरामी ।

३. बालापनमा
ख्यालख्यालमै माया
आज भो आँसु ।

४. भाले त भास्यो
उज्यालो नै भएन
अन्धकार छ ।

५. खाली नौटंकी
विद्यारानीको माया
मनमा छाप ।

**खुमेल, रोल्पा**

...

### नवराज बुढा 'नवीन उदासी'

१. बाँचौला संगै
दुःख पीडा भुलेर
संगै रमाई !

२. कसम खाई
अर्कैको भयौ आज
बाचा तोडेर !

३. निष्ठुरी मायाँ
भुल्ननि गाह्रो भयो
सम्झेर सधै !

४. तिमी त हाँस्छ्यौ
तर म त रूदैछु
दुःख पाएर !

५. भुल्न सकिन
निष्ठुरी मायालाई
एउटा पल !

**बुढागाउँ, रोल्पा**

...

### पुर्ण आले

१. बासना छर्नु
म ओइली झरेनि
तिमी फुलेरा

२. कमल बोकि
युद्धभूमि नजाउ
अधुरो कथा ।

३. संगाली दिनु
टाढा भए पनि म
चिनो मायाको ।

४. आसुले रूझ्यो
बैगुनीको यादमा
पछ्यौरी मेरो ।

५. पर्खेर बसे
बित्छकि जुनि ब्यर्थै
उनको यादमा ।

**मोरङ**
**हालः पेनाङ मलेसिया**

...

### देबेन्द्र शर्मा पौडेल

१. ताक्छ कमारी
कमारी चाँही जोई
मालीको छोरा ।

२. खसेको मन
टिप्यौ तिमीले किन
त्यसैमा रम्थैं ।

३. किन हो ठूले
यसरी पिटिस् नि
पातर्नी बन्छे ।

**ईलाम**

...

### तुलाराम खड्का

१. कुवाको पानी
बेस्या आईमाई
बाटोको फुल ।

२. बढेकी चेली
बलिरहेको आगो
खहरे खोला ।

३. आमाको माया
चन्द्रमाको सितल
बरको छाया ।

४. दुःखको पीडा
संघर्षको जीवन
बाटोको काँडा ।

५. हावाको बेग
बैरागिएको मन
गरेको पाप ।

**सर्लाही हाल पेनाङ**
**०१४३४६१७२०**

...

### बुद्धी "बैरागी"

१. ज्ञानेन्द्र गए
रामवरण आए
जस्ताको तस्तै ।

२. आमाको मन
रूवाएरै छोडेछु
साहुको ऋण ।

३. फर्केर हेर
राजनीतिक नेता
देशको दशा ।

४. दशै तिहार
सुकुम्बासी बस्तीमा
फलामे ढोका ।

५. आमाको माया
वरपिपल छाँया
जुनेली रात ।

**कन्चनपुर**
**हाल पेनाङ मलेसिया**

...

### रामकुमार राई

१. अपांग यात्री
नेपाली संबिधान
भीरको बाटो ।

२. कोठीको बेश्या
बिदेशी संचालक
मन्त्रीको कुर्सी ।

३. लाउरे माया
आधुनिक जमात
चाउरे प्रीति ।

४. बुद्धको देश
गढीमाईको जात्रा
प्रचण्ड पथ ।

५. थाकेको बेला
एमालेको भागमा
पाकेको केरा ।

**भोजपुर**
**हाल पेनाङ मलेसिया**

...

### राजेश प्रबाह

१. बर्बाद भयो
पलभरमै खुशी
सानो गल्तीले ।

२. साँचेर राखे
भनेको तिमीलाई
यो मेरो माया ।

३. शन्तिको देश
बुद्धको जन्मभूमि
क्रान्ति क्षेत्र भो ।

४. लुक्न देऊन
तिमी भित्र मलाई
अन्धो बैसमा ।

५. गौतम बुद्ध
जन्माइदेउ फेरि
नेपाली आमा ।

**उदाउादो तारा साहित्य**
**समाज पेनाङ मलेसिया**

...

### बिजु सुबेदी विजय

विश्व क्रन्तिको
आन्दोलनको चुरोट
सारा नेपाली ।

शान्तिको बाटो
संबिधान सभा नै
नेपाली नारा ।

वार्ताको युद्ध
प्रगतिशील पथ
यथार्थ सत्य ।

दानको धन
बिना मेहनतमा
प्रतिगमन ।

परिश्रममा
देशको बाटो सबै
अग्रगमन ।

**कुलेश्वर, काठमाण्डौ**
bijusubedigtmail.com

...

### नेगी धनेन्द्र

मञ्च एउटै
अभिनय फरक
दलको चाला ।

रित्तो मौसम
सुदामाको झुपडी
भ्यागुते मन ।

जुकाहरूले
संविधान बनाए
कस्तो हुँदो हो ।

घाम र पानी
मान्छेको जिन्दगानी
स्थीर कसरी ?

वर्षाको भेल
आँखाको डिलमा छ
रित्तो बगर ।

**जाजरकोट, नेपाल**
dbbnepal1news@gmail.com
**सम्पर्क** 9748028473

...

### सुरेन्द्र सुमन

१. वर्षौदेखि हो
भेरी बगीरहेछ
दुःख बगेन ।

२. विचरा ! माग्ने
सपनाको पसल
घाटामा सँधै ।

३. आलो रगत
कथित जनयुद्ध
सबै शहिद ।

४. भिसा लाग्यो
विदेश जाने बेला
बाबुको मृत्यु ।

५. शंकालु मन
विदेशिएका दाजु
भाउजु अन्तै ।

...

### तारा थापा मगर

१. आउँदा याद
मनमा पीडै पीडा
बाहिर हाँसो ।

२. जो पेट भर्न
मुस्किल भई राछ
दानको ईच्छा ।

३. स्वदेशी पीडा
पसिनाको कमाई
मायामा स्वाहा ।

४. कृषिको देश
अनिकाल अन्नको
हाम्रो नेपाल ।

५. धर्तिको बस्ती
आकाशको चौतारी
नेताको दौड ।

**हाल नेपाल**

...

### जीतमान राई 'सबिन'

१. विरही धुन
एकान्त देउराली
बिरोधाभास ।

२. जीवन गीत
मृत्युमय याममा
तितो मिलन ।

३. फूल चढाए
बगैचा शुन्य-शुन्य
मिठो भुल त्यो ।

४. सेताम्मे हिउ
जुन फूल सिउरी
कपाल भरी ।

५. मरूभूमिमा
जिउन खोज्नेहरू
मृत्युवरण ।

**लक्ष्मीपुर-५, नमुनाबस्ती,**
**ईलाम, हाल मलेसिया**

...

### दिलिप राई 'सगर'

१. फौदारी केटा
कुट्यो कुटाई खायो
अपाङ्ग भयो ।

२.  नेपाली केटी
बिदेशी ब्वाइफ्रेण्ड
लोग्ने घरमा ।

३. बिदेश यात्रा
मलायाको बसाइ
घर न घाट ।

४. प्रेम लडाई
अन्तर्जातीय प्रेम
खीरमा ढुङ्गा ।

५. स्वतन्त्र नारी ।
लोग्नेले सौता ल्यायो
तलाक पत्र ।

**उर्लाबारी, मोरङ**

...

### थाकुहाङ मेरीङ

१. हुदैछ सस्तो
हाम्रो मुल्याङ्कन
परदेशतिर ।

२. नाता सकियो
आफ्नोपनको यहाँ
स्वार्थको खेती ।

३. भद्रगोल छ
चिसो धरातलमा
शीत पर्नाले ।

**बाफ्लो, इलाम**

...

### टुकेन्द्र पौरखी

१. मेरो आयतन्
खुम्चिदै निचोरिदै
प्रवासभित्र ।

२. तस्बिरमा हुन्छ
उचाईहिन हिमाल
संबिधान सभा ।

**लक्ष्मिपुर-५, ईलाम**

...

### नबिन भ्फोडाली

१. सडक छेउ
अर्धनग्न युवती
साँझको बेला ।

२. हत्या र हिंसा
बुद्धको यो देशमा
कहिले सम्म ।

३. मन्त्री पो बने
अरूको काँध चढी
हरूवा नेता ।

४. भर्खर मात्र
भ्रष्ट्रचारी नाइके
जेल चलान ।

५. त्रिशुलीतिर
भ्रष्ट्रचारीलाई त
बगाए हुन्छ ।

रमाइलो, मोरङ्

...

### सन्दिप संगौला 'दिनदुखी'

१. क्षणिक साथ
मुटु भरी वेदना
आँशुको दह ।

२. प्रवासी भूमि
गरिबको बाध्यता
निराशी फल ।

३. नेताको कुर्सी
तुहिएको सपना
जनता दुःखी ।

४. पुर्खाको सान
देशको संक्रमण
झुकेको शीर ।

५. खुनको होली
कुटाकुट सांसद
नुनको खाँचो ।

**सुङ्नाम-४, तेह्रथुम**

...

### केशव भट्टराई 'प्रकृती प्रेमी'

१. यो अनिकाल
खेती राजनितीको

सबै मिलेर ।

२. परदेशमा म
हरपल सम्झना
जन्मभूमिको ।

३. नेपालको वन
प्राकृतिक सौन्दर्य
प्रकृतीप्रमी ।

४. तिमी बनाउ
तर त्रिशुल ध्वजा
छुन्न मन्दिर ।

५. घुसको भर
सरकारी जागीर
नेपालको शिक्षा ।

**वाङ्ला-५, अर्घाखाँची**

---

## इन्द्रदिप 'अपेक्षा'

१. वेकुफ नेता
बिद्रोहकी समाधि
देशद्रोह हो ।

२. अखण्डता यो
राष्ट्रियता कहाँ छ
लोकतन्त्रमा ।

३. कति भुक्छौ ए
भुस्याहा कुकुर हो
भुक अझै नी ।

४. बिस्तारबादी
भारतीय हस्तक्षेप
'कु' मुर्दाबाद ।

**प्रतीक्षानगर-तेह्रथुम**

---

## सुम्निमा बियोगी

१. वैंशालु मन
पिपल देउराली
उराठी हावा ।

२. निलो गगन
तिम्रो आगमनले
तारा रोएछ ।

३. हरियो दुबो
सम्सॉझै खस्ने शीत
मिठो मिलन ।

**इलाम**

**उदाउँदो तारा साहित्य समाजले हालसम्म गरेका कार्यक्रमहरु**

* पुण्ज साहित्य संगालो २००९
* सिर्जनाका स्वरहरू (सयुक्त गजल संग्रह २०११)
* स्रष्टा सम्मान २०११

सस्था सम्मानित (अनाममण्डली मलेसियाबाट सम्मान तथा प्रमाणपत्र)
बिश्व नेपाली साहित्य महासंघबाट सम्मानित ईन्द्रेणी, साहित्यिक हवाई पत्रिका (हाइकु बिशेषाङ्क)

## सोचेर निस्किएको ...

सुनुवर सेवा समाज नेपाल र साहित्य सन्जाल नेपालको आजीवन सदस्य हुनुहुन्छ । त्यसैगरी किरात सनुवार समाज सेवा (२००७-२००९) सम्म सचिव, अन्तर्राष्ट्रीय नेपाली साहित्य समाज बेलायत च्याप्टरको सदस्य (२००९-२०११), विश्व नेपाली साहित्य महासङ्घ केन्द्रीय समितिको केन्द्रीय सदस्यलगायत अन्य सङ्घ संस्थाहरूसंग आबद्ध रहेका छन् । उहाले बेलायतबाट तोशेल फू सुनुवारी मासिक पत्रिकाको साथै www.onlineliteratures.info, www.sahityasangalo.com को पनि सम्पादन गरिसक्नुभएको छ । १६ भन्दा बढी बिभिन्न मलुकुहरू भ्रमण गर्नु भएका साहित्यकार केदार सुनुवार सङ्केतसँग सस्थाका सचिब जीतमान राई "सविन" ले यस इण्द्रेणी साहित्यिक त्रैमासिक पत्रिकाको लागि गर्नु भएको कुराकानी

**तपाईको आफ्नो बारेमा छोटकरीमा बताईदिनोस् न ?** म साधारण परिवारमा जन्मेर हुर्किऐको खाँटी पहाडे लेखक हुँ भन्न मन पराउछु । मेरो बाल्यकाल पहाड र थोरै समय काठमाण्डौ बित्यो । मेरो प्राथमिक र माध्यामिक तहका पढाईहरू गाउमानै दुःख सुख सकियो । २०४३ सालमा पाटन मल्टिपल क्याम्पसमा अध्ययन गर्दा गर्दै नोभेम्बर २०८९ मा म ब्रिटिश सेनामा भर्ती भए । १६ बर्षको कार्यकाल सकेर हाल म बेलायतमा दुई छोरी प्रेरिका, प्रकृति र श्रीमती पार्वतीसँग जीवन गुजारा गरिहरेको छु ।

**तपाईको यात्रा संमरण एथेन्सको झरीले नेपाली साहित्य बजार मा निकै चर्चा पायो, कस्तो महसुस गर्दैहुनुहुन्छ ?**
मेरो लागि नितान्त गौरवको कुरा हो यो । किनकी एउटा भर्खर बामे सर्न लागेको बालकलाई कसैले हात समाई दिएमा त्यो बालकले अरू धेरै पाइला हिजोको भन्दा चाँडो सार्नेछ भने जस्तै मेरा कलम र साहित्य सृजनामा अलिकति कछुवाको गतिलाई त्यागेर फट्को मार्ने काम आएको छ ।
आजभोली लेखनलाई भन्दा पनि साहित्य अध्यनलाई बढी जोड दिएको छु, अध्ययन गर्दै छु । त्यसैले मैले यो मौकामा धन्यवाद दिनु पर्छ एथेन्सको झरीमा भूमिका लेखिदिने साहित्यकार गोविन्दराज भट्टराई, डा. होमनाथ सुवेदी, दयाकृष्ण राई, महेन्द्र बहुमुखी क्याम्पस, धरानको नेपाली बिभागद्वारा आयोजित बहुरङगवादका बाटामा एथेन्सको झरी परिचर्चा कार्यक्रममा प्रस्तुत टिप्पणी" एथेन्सको चेतनाले रूझेको मन" राम्जी तिमल्सिना, समिक्षा, कथाकार शमिर्ला खड्का (दाहाल) (गरिमा मा पुस्तक चर्चा) तथा समिक्षा, हेमन्त परदेसी,समिक्षा फेशबुक, सम्पादकीय मन्डलीलगायत सबै सहयोगी मित्रहरूलाई म हार्दिक धन्यवाद दिन चाहन्छु ।

**तपाईको अर्को संग्रह हाईकुविधामा चाडै आउदैछ हैन, कहिले सम्ममा हामीले पढ्न पाईएला त ?**
हो, मेरो "पैयुँका फूलहरू" हाइकु संग्रह यो वर्षमानै आउनेछ । त्यो बाहेक सङकलित यात्रा स्पर्श, (नयाँ यात्रा लेखन ) सङकलित रेखा कविता र मेरै एउटा

**कविता कृती पनि यो वर्षको अन्त्य सम्ममा बजारमा आई पुग्ने अभीलाशा राखेको छुँ ।**

**तपाई नियात्राकार कि हाइकुकवि ?**
म प्रायः सबै साहित्यिक बिधाहरूमा कलम चलाऊन रूचाउने हुनाले म कवि या नियात्राकार भन्दा पनि साहित्यकार भनेर चिनिनुमा बढी मेहनत गर्दैछु ।

**हाईकु के हो ? यसको बारेमा केही बताई दिनुहुन्छ की ?**
यहाँ हाइकु र सेन्यूमा अलिकती हामी प्रस्ट नभएको अर्थात छुट्याउन गाह्रो भएकोले छोटो जानकारी गराउन उचित ठाने यतिखेर यो मौकामा । हाइकु पाँच, सात, पाँच अक्षरका तीन हरफमा अर्थात १७ अक्षरमा (लक्षित तथा आदर्शको रूपमा) लेखिएता पनि केही शब्दहरू तलमाथि पर्नुलाई स्वभाविक रूप मा लिइने गरेको पाईन्छ । तर यस्को स्पस्टताको निम्ती यदी तपाईको कविताामा मानवको उल्लेख नभएर, मात्र प्राकृति कजगत को उल्लेख छ भने अथवा मात्र ॠतुलाई सङकेत गरिन्छ भने त्यसलाई पनि हाइकु नै भनिन्छ । हाइकु, ॠतुहरूको सन्दर्भ, उल्लेख र सङकेत दिदै लेखिने बिधा हो यस्लाई जापानी भाषामा (किगो) भनिन्छ । किगोमा प्रायसः अलंकारस जस्मा बस्तुको अर्थात पदार्थको साटो त्यस्को कुनै एउटा गुण झल्किएको हुन्छ तर आजभोली जापानी कविहरूले बिस्तारै बिनिर्माणको सिद्धान्त अपनाइएको पाईन्छ हाइकु लेख्ने पद्दतिमा पनि । १६ शताब्दिको उत्तरार्धतिर रेन्गार रेन्कु १६४४-१६९४ मात्सु ओबाशोउर १९६१-१७३८ मायसहिमा ओनितसुराले परिमार्जित गरेको पाईन्छ भने होकुबाट हाइकुको नामाकरण १९ शताब्दिको अन्त्य 1867–1902 मा जापानी लेखकमा साओका शिकीले गरेका हुन् । हेरौ एउटा जापानी प्रसिद्ध हाइकुः

by bash "old pond"
u–ru–i–keya -5
ka–wa–zu to–bi–ko–mu -7
mi–zu no o–to -5
Translated:
old pond
a frog leaps
in water's sound.

केही अरू संकलित उदाहरणहरू

पुषको जाडो
हिउँसरिको माया
गर्मीमा पग्ल्यो ।

पुर्णेको रात
जून मुस्कुराउदा
छाँया हारायो ।

चैत महिना
हुरीको चुरिफुरी
बेगिदो मन ।

सेन्यू SENRYU

सेन्यू अर्को जापानी कविता हो र यो पनि हाइकु जस्तै पाँच, सात, पाँच अक्षरका तीन हरफमा अर्थात १७ अक्षर मा लेखिन्छ । हाइकु कविताले सधै शारीरिक तथा प्रकृतिको संरचनामा बढी जोडिएको हुन्छ भने सेन्यूमा सिंगो मानवजगतलाई हास्यात्मक अर्थात छेड-छाड गरेर अभिव्यक्त गरिन्छ । कतिपय लेखक तथा कविहरूले यस्को विशेषता छुट्याउन नसकेर सबै ५-७-५ कवितालाई हाइकु नै मान्दछन ।
यदी हामीले कोही व्यक्तिद्वारा या व्यक्तिको समुहद्वारा केही गरिरहेको, केही सोचीरहेको अथवा केही महशुस गरीरहेको छ र यदि त्यसलाई समेटेर ब्यंग्यत्मक तरिकाले ५-७-५ मा लेखिन्छ भने यस्लाई सेन्यू भनिछ ।

जस्तै :

मन्त्री जेलमा
नेपालको कानुन
लाटीको गुन्यू

उमेर नहुदै
बैंस रित्तियो भन्छे
नक्कली मोरी ।

निन्द्राको नास
ऐ सोल्टीनीको आस
अनिधो रात ।

वास्तवमा हाइकुले जीवनको हरेक पक्षलाई चित्रण गर्दछ । प्रकृतिको विम्बलाई आधार बनाएर समाजको हरेक घटनालाई केवल १७ अक्षर को माध्यमबाट सूत्रात्मक अर्थात साङकेतिक तवरले तुबोध जीवन दर्शन दिनु भनेको धेरै राम्रा कुरा हुन । नेपाली साहित्य जगतमा लोकगीतमा मात्र लोकभाका हालेर दोहोरी खेल्न सकिन्थ्यो तर हाइकु अर्थात सेन्यूमा सजिलो तवर्ले लेखेर छोटो समयको दुरीमा मनको कुरालाई आफाल्न सकिन्छ (हेर्नुस् फेशबुकमा हाइकुको लालित्यका केही दोहोरी झकाशहरु)

**यस्तो छोटो कविता पाठकहरूले पढ्न रूचाउलान् र ?**
अब हामीले लामो रचना धेरै दिन लगाएर एजन एजन कुरा बुझ्नु र छोटो तार्किक तत्व र मसलादार लेखहरूमा एजन एजन कुराहरू नै बुझ्नुमा हामी केही मात्रमा घोलिनु जरूरी देख्दछु । हाइकु र सुन्यूमा अनुशासनमय सानदारको भावभूमिको प्रस्टिले सिङगारिएको हुने भएकोले यो विधा नेपालमा मात्र नभै संसारका धेरै देशहरूमा दिनानुदिन फैलिदोछ । अमेरिकामात हाइकुको संगठन नै छ । त्यस्तै गरेर बेलायत लगायत युरोपमा पनि हाइकुको रौनक त्यत्तिकै बढ्दो छ । यस्तो छोटो, मिठो र चोटिलो साहित्य सबैले भन्दा पनि नयाँ युवा पुस्ताले अरू बढी रूचाउने छ भन्दा दुईमत नहोला भन्छुम ।

**तपाईको बिचारमा साहित्य के हो ?**
मसिका रङहरू पोखाएर मात्रा कलमहरू निर्वस्त्र हुनुमा आजको साहितयिक पारीबेश परिसकरित हुन सक्दैन । आफ्नै पीडा र बेदनामात्र छताछुल्ल ब्यक्त गरेर, गाँउ समाज र राष्ट्रले राहत पाउन सकेन । भोगाइ भित्रको लेखाई र लेखाई भित्रको भोगाइले मात्र आजका पाठकहरूको मन जितिन्न । भुतका गल्ती, बर्तमानमा चेतना र भविस्यमा देखा पर्नसक्ने भविस्यवाणी समाविस्ट हुनु पनि आजको साहित्य र साहित्यकारको दायित्व हुन । म त भन्छु साहित्य शक्ती हो । तर साहित्यको बारेमा विभिन्न मत मतान्तर देखिन्छ । अव तपाई साहित्यकार अर्थात पाठक भएर आफै सोच्नुस्, अनि जेसोच्नु हुन्छ निस्कर्समा र निस्कन्छ त्यही हो साहित्य । यो जगतले समय अनुसार परिवर्तन माग्ने हुनाले त्यो सम्झेर लेखिनेनै साहित्य हो । अनी त्यो साहित्य मा शक्ति अदृश्य हुन्छ, तर चेतनामा परिवर्तन गर्दै लैजान्छ उक्त साहित्यले । सम्झिनु त्यो बहुत हुन्छ ।

**के को लागि साहित्य लेख्नुहुन्छ ?**
म परिवर्तनका लागि साहित्य लेख्छु । बिना परिवर्तन जीवन निरासमय छ । निरसमय जीवनले जगतसँग प्रतिस्पर्धा गर्न सक्दैना
अन्यमा, उदाउदो तारा साहित्य समाज पेनाङ मलेसियाको प्रकाशन इण्द्रेणी साहित्यिक त्रैमासिक पत्रिकाका सबै सदस्यहरूलाई एउटै हरफ थप्न चाहन्छु "घरदेशबाट दुर देशमा रहेर जस्तै दुःखको घडीमा पनि आफ्नो कर्तव्य कहिले नभुल्नुस्" हाम्रो साथ सधैं यसरी नै अगाडी बढीरहोस् । ०